# संगीतको उत्पत्ति तथा विकास र नेपाल- एक सन्दर्भ

-परशुराम पौडेल
उप-प्राध्यापक (तबला)
ललितकला क्याम्पस

प्रथमतः संगीत शब्द 'गीत' शब्दमा "सम्" उपसर्ग लागेर बनेको हो, जसको अर्थ हुन्छ गीत सहितको कृयाहरुको प्रस्तुतीकरण संगीत हो । श्रृष्टीका विभिन्न पक्षहरु मध्ये संगीत पनि एक प्रमुख पक्ष हो । सृष्टिको संरचना, सञ्चालन तथा संहार सबै पक्षमा संगीतले प्रत्यक्ष-अप्रत्यक्ष रुपमा प्रभाव पार्दै आएको छ ।

इतिहास खोतल्ने हो भने र पौराणीक कथाहरु नियाल्ने हो भने सृष्टि र संगीत दुवैलाई जुम्ल्याहा भन्न फरक नमाने पनि हुन्छ किनकी सृष्टिकर्ता (ब्रम्हा) तथा ज्ञानकी साम्राज्ञीसरस्वती पनि संगीतका प्रमुख सात श्वर (सा, रे, ग, म, प, ध, नि) सँगसँगै अवतरित हुनुभएको व्याख्या पौराणिक ग्रन्थहरुमा पाउन सकिन्छ । महादेवको ताण्डव नृत्य, डमरुको आविष्कार, महादेवद्वारा पञ्चराग[1](भैरव, हिडोल, मेघ, दीपक र श्री) को रचना, ब्रम्हाको करताल वादन, सरस्वतीको विण वादन, विष्णु तथा शिवपूत्र गणेशको मृदंग वादन, नारदमुनिको एकतारे, अप्सराहरुको मनमोहिनी नृत्य आदिले सृष्टिकालमा संगीतको सर्वव्यापकता पुष्टी गर्दछन् ।

सत्ययुग पछि त्रेता युगमा राक्षस-राज रावणको सरोद वादन, गायन कलामा निपुर्ण लवकुश बन्धु आदि रहे भने द्वापरयुगमा वंशीधर श्रीकृष्ण, संगीत भोगी देवेन्द्र, कण्ठ संगीत तथा विणा वादनका ज्ञाता अर्जनु, नृत्य गुरु श्री स्तोक (कृष्णका नृत्य गुरु) आदि उल्लेखनिय हुन् । त्यसै गरी कलियुगको पुर्वाधदेखि नै पनि विभिन्न संगीतानुरागी-भक्तहरु कविरदास, सुरदास, मीरावाई, तुलसीदास, तानसेन, वैजुवावरा, आदिको नाम मननयोग्य छन् ।

इसा पूर्व ४०० तिर रचित वाल्मीकीको रामायणमा वाल्मीकीको मतानुसार श्री रामबाट धनुष तोडेपछि आकाशमा देव-देवीहरुले दुन्दुभी वादन[2] गरेका थिए भने देवी तथा सखीहरु नृत्य तथा मंगलगानमा मग्न थिए । स्मरण होस् वाल्मीकिले रामायण लगभग ईसापूर्व ४०० मा लेखेका कुरा ईतिहासमा पाइन्छ । यसरी धार्मिक व्याख्यानरुमा संगीतको उत्पत्ति विभिन्न देव-देवीहरुबाट भएको उल्लेख भएपनि हालको भौतिक जगतका शास्त्रकारहरुका कथन भने केहि भिन्न रहेको छ ।

केहि शास्त्रकारहरुको कथन अनुसार मयूर, चात्रक, वाखा, काग, कोइली, भ्यागुतो र हात्ती[3]का श्वरबाट क्रमशः सा, रे, ग, म, प, ध, नि स्वर उत्पत्ति भएको हो । त्यसै गरी पशिचमि विद्वान फ्रायडका अनुसार बालकले रुवाई, बोलाई, खेलाई, हँसाई आदि मनोवैज्ञानिक प्रकृयाबाट सिके झैं संगीत पनि मनोवैज्ञानिक प्रकृयाका आधारमा मानिसद्वारा उत्पत्ति भएको हो । विद्वान पाइथागोरसका मतानुसार मानिसलाई सर्वप्रथम षडज-पञ्चम (सा-प)को कर्णप्रिय स्वरको

[1]भरतको सङ्गित सिद्दान्त
[2]श्री रामचरितमानस चौपाइ-२६२,गीत प्रेस
[3]सङ्गित दर्पण- प दामोदर मिश्र,स्लोक १७०-१७१

अनुभव भयो र क्रमशः अरु बाँकी श्वर ऋषभ, गान्धार, मध्यम, धैवत, निषाद (रे, ग, म, ध, नि) हरुको विकाश भयो । एक फारसी विद्वानले "मुसीकार" नामको पंक्षीको श्वरबाट संगीतका सात श्वरहरु उत्पत्ति भएको उल्लेख गरेका छन् । मेरो विचारमा संगीत मानव सभ्यताको शुरुवातसँगै चरणगत रुपमा उत्पत्ति, विकाश, प्रचार, प्रसार हुँदै आएको हो । मानिसलाई सुरक्षित रहन आश्रम (घर) कपडा आदिको उत्पत्ति मानिसकै आवश्यकताले जन्माए जस्तै संगीत पनि मानवीय आवश्यकताबाट श्रृजित अतुलनिय वस्तु हो । यसरी संगीतको उत्पत्तिका विषयमा जे जस्तो तर्क-वितर्क पाइए तापनि पूर्वीय इतिहासकारहरुले भने संगीतको इतिहास[4]काललाई ४ प्रमुख कालमा विभाजन गरेका छन् ।

**क) अति-प्राचिन कालः** सृष्टिकालदेखि नै संगीतको उत्पत्ति भएको मानिए तापनि २००० ईशापुर्व देखी १००० इसापुर्व सम्मको युगलाई इतिहासकारहरुले संगीतको अति-प्राचिन कालका संज्ञा दिएका छन् । एशिया महादेशको भारत खण्ड महाद्विपमा त्यतिबेला नै ब्राम्हण, क्षेत्री, वैश्य, शुद्र गरी वर्ग विभाजन भैसकेको थियो । त्यत्ति बेला ब्राम्हणहरु नै अन्य वर्गहरुको लागि संगीत तथा ज्ञानदाताका रुपमा संगठित थिए । त्यस समयमा सांगीतिक कृयाकलापमा स्त्री-पुरुष दुवैको सहभागिता हुने गरेको कुरा इतिहासमा उल्लेख छ । एक विद्वानको भनाईमा वैदिक काल वा अति-प्राचिन कालमा मानिसहरुको संगीतप्रतिको लगाव अत्यन्तै थियो । पूर्वीय इतिहासकारहरुको मतमा महाभारतको युद्ध कम-से-कम १५०० देखि ११०० इसापूर्वमा भएको अनुमान छ । यस कालमा उल्लेख्य संगीत पारंगतहरुमा श्री कृष्ण, स्तोक, अर्जुन, गन्धर्व, किन्नर आदि मानिन्छन् ।

**ख) प्राचिन कालः** वैद्धिक कालको समाप्ति लगत्तैको युगलाई शास्त्रकारहरुले प्राचिन कालको संज्ञा दिएका छन्, यस काल इसापूर्व १००० देखि लगभग इस्वी सन् ८०० सम्म रह्यो । इतिहासकारहरुको मतानुसार गौतम बुद्धको जीवनकाल इसापूर्व ५६३ देखि ४८३ सम्म रह्यो । यसै अवधिमा एक पटक गौतम बुद्धको जन्मोत्सवमा ५००[5] बाजाहरुको वृन्दवादन (समुह वादन) भएको थियो । उनको जीवनकालमा संगीतज्ञहरुलाई विशेष मान प्रदान गरिन्थ्यो भने बौद्ध गुम्बा, मन्दिर आदि देवालयहरुमा आराधनाको लागि कलाकारहरु नियुक्त गरि उचित कार्यक्रम, सम्मान तथा पारिश्रमिक दिइन्थ्यो । त्यस समयका प्रसिद्द विश्व-विद्धयालय नालन्दा र बिक्रमशिला जस्ता विश्व-विद्धयालयहरुमा सङ्गितका छुट्टै संकाय थिए ।[6] लिच्छविकालिन-किराँतकालिन विभिन्न मठ-मन्दिरका द्वार, टुँडालहरुमा संगीतमा तल्लीन देखिने देवी-देवता तथा मूर्ति-आकृतिहरुले नेपालमा वसोवासकाल देखि नै संगीतको प्रभाव भएको कुरा वर्णन गर्दछन् । गोपाल वंश तथा महिषपाल वंशीको शासनकालमा धर्मकर्मको बढि प्रचार-प्रसार भएकोबाट पनि संगीतको अस्तित्व तत्कालिन समयमा व्याप्त थियो भन्न सकिन्छ । तत्कालिन राजाहरुको विलासीपनले राजाहरुको संगीतप्रतिको लगाव प्रष्ट हुन्छ ।

**ग) मध्यकालः** यस काल करिब ८०० देखि करिब १२०० इस्वीसम्म रह्यो । तत्कालिन समयमा राजा तथा राज्यहरुबिच खिचातानी आदिका कारणले युद्धमै केन्द्रित रह्यो । ठुला राज्यहरु स-साना राज्यहरुमा विभाजित भए । सत्तासिन शक्तिशाली शासकहरुको विलासीपनले दरबारभित्र संगीतलाई प्रोत्साहन दिन थालियो । त्यसबेला छिमेकी राज्यहरुबाट संगीतज्ञहरु झिकाई विभिन्न कार्यक्रमहरु सञ्चालन गरीने गरिन्थ्यो भने शासकहरु स्वयं संगीतको शिक्षा

---

[5]भारतीय सङ्गितका ईतिहास,स्व डा. ठाकुर जयदेव सिंह

[5]सङ्गित विशारद, बसन्त, पेज-२०

[6]कलानिधी त्रैमासिक-बस-९, अंक-१,

लिने र लिन लगाउने पनि गर्दथे । वास्तुकला, मुर्तिकला, चित्रकला, नृत्यकला, अभिनय, साहित्य, धर्मसंस्कृति आदिको विकाशमा मल्ल राजाहरुका[7] विशेष योगदान रहेको छ । जयस्थिति मल्लद्वारा निर्मित राम मन्दिर, कुम्भेश्वर, उन्मत्त भैरव, तलेजु-भवानी, ५५ झ्याले दरबार, कृष्णमन्दिर आदि लगायत चैत्य, विहार आदि देवालय तथा दरबारहरुमा कुँदिएका कलाहरु पनि तत्कालिन शासकहरुले संगीतप्रति देखाएको भावनाको ध्योतक हो । काठमाडौंका अन्तिम राजा जय प्रकाश मल्ल त गन्धर्व विधामा पारंगत थिए भन्ने इतिहासबाट प्रष्ट हुन्छ । त्यसै गरी प्रतापमल्ल पनि संगीत र कलाका पारखी थिए । सिद्धि नरसिंह मल्लले कार्तिक नाचको चलन चलाए भने तत्कालिन समयदेखि प्रचलनमा आइरहेका विभिन्न सांगीतिक पर्व, नाचहरु आजसम्म पनि चलिरहेका छन् । भारतिय इतिहास क्रममा विशेष गरी यवन काल (सन् ६४७-सन् १२९०), खीलजी युग (सन् १२९०-सन् १३२०) अमिर खुसरोको जीवनकाल, तुगलक युग, मुगल काल (सन् १५२५-सन् १७४०) अकवर काल (सन् १५६०-सन् १६०५), अंग्रेजको प्रारम्भ काल आदि संगीतका उल्लेख्य अवधि मानिन्छन् भने नेपालमा लिच्छबी-शासनकाल[8]को करीब करीब ६३० बर्षलाई (लगभग ७ औ शताब्दी देखी १४ औ शताब्दी) ललितकलाको स्वर्णयुग मानिन्छ ।

**घ) आधुनिक कालः** सन् १८०० भन्दा यताको समयावधिलाई इतिहासकारहरुले आधुनिक कालको श्रेणीमा विभक्त गरेका छन् । यस कालमा संगीत एक छुट्टै विधाको रुपमा स्थापित भयो । विशेष गरी भारतमा संगीतको लोकप्रियता अधिक रह्यो । भारतका जयपुर नरेश[9](सन् १७७१-सन् १८०४) ले संगीतलाई शास्त्रोक्त व्यवस्था गर्न "संगीत सार" नामक ग्रन्थ रचना गराए भने विद्वानद्वय पं. विष्णु नारायण भारतखण्ड तथा पं. विष्णु दीगम्बर पलुष्करको योगदान हालसम्म नै प्रशंसा योग्य रहि आएको छ । वहाँहरुले संगीतलाई लिपिवद्ध गर्न छुट्टाछुट्टै लिपिको विकाश गर्नु भयो । हाल भने भारतखण्डे लिपि अत्याधिक प्रचलित रहि आएको छ । यस कालमा विभिन्न संगीत विद्यालय खुल्नुले संगीतको अत्याधिक प्रचार भयो । स-साना राज्यहरुको एकिकरण तथा स्वतन्त्र राज्य स्थापनाले संगीतको जगजगी अन्तर्राष्ट्रिय रुपमा फैलियो । राजनैतिक जागरण, देशभक्ति, जन चेतनामूलक कार्यहरुमा समेत संगीतको यथेष्ट प्रयोग भयो । विभिन्न खोज अनुसन्धान गरियो भने सञ्चार माध्यमको विकाशले संगीतमा हरेक विधाहरु (प्रकारहरु) प्रकाशमा आए । संगीतको शिक्षा सर्वसुलभ भयो । संगीतलाई शोभालंकृत गरियो । स-साना राज्य एकीकरण पश्चात् विभिन्न व्यक्तिहरुलाई संगीत शिक्षा दिलाउन भारतिय संगीतज्ञ नेपालमा बोलाउने प्रचलन रह्यो । संगीतमा इच्छा राख्ने धनाढ्यहरु कलाकार नियुक्त गर्ने, विदेशमा गई संगीत ज्ञानार्जन गर्ने गर्दथे । नेपालमा राणा कालमा संगीतले दरबारी प्रश्रय पायो भने राजा त्रिभुवन पस्चात भने नेपाली तथा शास्त्रीय सङ्गित जन जनमा लोकप्रिय हुँदै आइरहेको अवस्था छ । आधुनिक कालिन प्रमुख नेपाली संगीत पारंगतहरुमा[10] वखतविर बुढापिर्धी (सन् १८५७-१९२०), सुचेत सिंह प्रधान (सन् १८५८-१९२०), उ. उजीर तण्डुकार (सन् १८६४-१९३४, उ. नानकमिश्र (सन् १८७०-१९५४), उ. नन्दलाल श्रेष्ठ (सन् १८७७-१९४९), प्रो. वालाप्रसाद शर्मा, उ. बद्री (सन् १९००-१९६१), एकराज शमसेर, संगीत सिरोमणी यज्ञराज शर्मा, श्रीमती मेलवा देवी, मित्रसेन, उ. चेतनाथ शर्मा आदि हुन् । तत्कालिन राणा शासनको अन्त तथा प्रजातन्त्रको शुरुवातकालमा संगीतलाई जन जागरण कार्यमा ज्यादातर उपयोग गरियो । सन् १९५० मा रेडियो नेपालको स्थापनाले गर्दा संगीत देशभित्रका प्रत्येक गाउँ-गाउँका गोठ, करेसा, कान्ला, आली-आलीमा गुञ्जायमान हुन

---

[7] सतिशचन्द्र रेग्मी,पेज-२६
[8]नेपालको ईतिहास बाबुराम आचार्य
[9]भारतीय सङ्गितका ईतिहास,स्व डा. ठाकुर जयदेव सिंह
[10] नेपाली सङ्गित साधक- राम शरण दर्नाल

थाल्यो । देशको एकमात्र विश्वविद्यालय त्रिभुवन विश्वविद्यालयल अन्तर्गत बि स २०१७ देखी पद्मकन्या बहुमुखी क्याम्पस, २०३० देखी रत्नराज्य क्याम्पस र २०३३ देखी ललितकला क्याम्पसमा भने बि स २०६६-६७ बाट सङ्गितमा स्नातकोत्तर तहको पठन-पाठन सुरु भयो । त्यसैगरि अन्य संघ-संस्था व्यक्तिहरुले पनि संगीतको शिक्षा दिन प्रारम्भ गरे । विभिन्न गुरुकुल, संगीत समूह, क्लब, खलः, भजन गृह आदिको स्थापना भए । २००७ को प्रजातन्त्रको उदयसँगै संगीतलाई लोकप्रियता दिने संगीतकारहरु मुख्यतः उ. गणेश लाल श्रेष्ठ, काली प्रसाद शर्मा, जनार्दन सम, नातीकाजी, रत्नदास, धर्मराज थापा, यज्ञराज शर्मा, नरराज ढकाल, शम्भू प्रसाद मिश्र, साम्बदेव शर्मा, उ. नारायण तण्डुकार, तारादेवी, नारायण गोपाल, गोपाल योञ्जन आदी रहनुभयो भने नेपालमा गणतन्त्र पस्चात अम्बर गुरुङ्ग, अरुण थापा,कुमार बस्नेत, गणेश रसिक, अरुणा लामा, दीप श्रेष्ठ, प्रकाश श्रेष्ठ, अरुण थापा,फत्तेमान, शिवशंकर, होमनाथ उपाध्याय, भवनाथ उपाध्याय, धन ब गोपाली, उमा थापा, मोहन सुन्दर श्रेष्ठ, मोहन प्रसाद जोशी, डा ध्रुबेश रेग्मी, स्व अतुल गौतम , ज्ञानुराधा गोर्खाली, तारा बिर तुलाधर, भरत नेपाली, संगीता प्रधान, रविन लाल श्रेष्ठ, अच्युतराम भण्डारी, प्रेमचन्द्र ओझैया, डन्कनदास चौधरी लगायत धेरै कलाकारहरु रहेका छन् । त्यसैगरि एकातिर सामाजिक सस्थाहरु कलानिधी संगीत महाबिद्यालय, नारायण संगीत प्रतिस्ठान (हाल-अतुल स्मृति गुरुकुल), किरातेश्वर सङ्गिताश्राम, यलमाया, नारायणस्थान-नारायणहिटी , पशुपतिनाथ कला प्रतिस्ठान , कपन सङ्गित सरोवर , नेपाल सङ्गित बिद्यालय, गुरुकुल संगीत केन्द्र-पोखरा , राममन्दिर सङ्गित बत्तिसपुतली जस्ता सस्थाहरुले नियमित रुपमा शास्त्रीय सङ्गितको कार्यक्रमहरुको आयोजना गर्दै नेपालमा शास्त्रीय सङ्गितको सम्बर्दन प्रबर्दन र बिकासमा महत्वपूर्ण भूमिका निर्बाह गरिरहेका छन भने अर्कोतिर अन्य व्यक्तिगत सङ्गित प्रशिक्षण केन्द्रहरुले आ-आफ्ना तबरले संगीतलाई गती दिने काम गरिरहेका छन । हालको परीप्रेक्ष्यमा हाम्रो देशमा पश्चिमी संगीतको वाहुल्यता भएको कारण मिश्रित किसीमको संगीत देखिएको छ । रेडियो टि भि तथा अन्य प्राबिधिक/लिखित सञ्चार माध्यमहरुको विकासले संगीतलाई अझ लोकप्रियता प्रदान गरेको देखिन्छ तथापी सङ्गितको परिमाणात्मक तथा गुणात्मक पक्षहरुलाई उचित तबरले अध्ययन अनुसन्धान गर्नु आजको आवश्यकता हो ।

**यती नै ।**